

क्वयेर युथ ग्रुप   کُوییر یُتھ گرُپ

**Queer Youth Group**

दर्ता नं : २४४९३५/०७७/०७८

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

---




चनं ००६/७७/७८

नेसं ११४१ कछला २७

२०७७ कार्तिक ३०

## सार्वजनिक वक्तव्य

हरेक वर्ष नोभेम्बर २० तारिखका दिन पारलैङ्गिक स्मृति दिवस (Transgender Day of Remembrance) मनाइन्छ । यो दिवस पारद्वेषिता (Transphobia)को शिकार भई ज्यान गुमाउन परेका दिगवंतहरूको सम्झनामा मनाइन्छ । पारलैङ्गिक व्यक्तिहरू प्रति राखिने घृणाको भाव वा कुनै व्यक्ति पारलैङ्गिक भएकै कारण उसको लैङ्गिक पहिचान लक्षित घृणाको भावलाई पारद्वेषिता (ट्रान्सफोबिया) भनिन्छ । पारलैङ्गिक व्यक्तिहरू घर, परिवार, समाज, विद्यालय लगायतका शैक्षिक संस्था, कार्यालय, सार्वजनिक स्थल लगायत सबै ठाउँमा आफ्नो लैङ्गिक पहिचानकै कारण विभिन्न स्वरूपका हिंसाका शिकार हुन बाध्य छन् । पारलैङ्गिक व्यक्तिहरू प्रति व्याप्त घृणा र द्वेषका कारण कतिपय पारलैङ्गिक व्यक्तिहरूले ज्यान गुमाउन परेको छ : कसैको हत्या नै गरिन्छ भने कसैलाई आत्महत्या गर्न बाध्य तुल्याइन्छ । पारलैङ्गिक व्यक्तिहरूले समजमा भोगिरहेको निरन्तर हिंसाहरूका बारेमा ध्यानाकर्षण हुन उत्तिकै महत्वपूर्ण छ ।

यस सालको पारलैङ्गिक स्मृति दिवस (नोभेम्बर २०) का दिन पारद्वेषी हिंसाको शिकार भई ज्यान गुमाएका दिगवंत पारलैङ्गिक व्यक्तिहरूको स्मृतिमा आ-आफ्नो अनुकूलतामा मैनबत्ति, दियो लगायत प्रज्वलन गर्न आवहान गर्दछौँ भने सामाजिक संजालमा यस दिवस बारे आफ्नो सन्देश साथ पोस्ट गर्न पनि आवहान गरिन्छ । समाजमा व्याप्त पारद्वेषिता र पारलैङ्गिक व्यक्तिहरू प्रति हुने हिंसा सम्बन्धी सृजनात्मक पोस्टहरू गर्न हामी प्रोत्साहन गर्छौँ। सामाजिक संजालमा पोस्ट गर्दा अनिवार्य रूपमा #TdorNepal र #TdorNepal2020 ह्यास-ट्यागहरू उल्लेख गर्न अनुरोध गरिन्छ । यसरी ह्यास-ट्यागको प्रयोगले नेपालमा मनाइने यस दिवसका सम्पूर्ण सामाजिक संजालको सामाग्रीलाई एकसुत्रमा राख्नुका साथै सालको आधारमा पनि एकसुत्र गर्न मद्दत गर्दछ । विश्वव्यापी सन्दर्भका लागि #TDoR र #TDoR2020 ह्यास-ट्याग प्रयोग गर्न सकिन्छ । हामी उक्त दिन यस ह्यास-ट्यागलाई पछ्याउनेछौँ र यसमा आएका पोस्टहरू सयेर गरी सामाजिक संजाल मार्फत् पारलैङ्गिक व्यक्तिहरू प्रति हुने हिंसा बारे बुलन्द आवाज उठाउनेछौँ।



रुक्शना कपाली

कार्यकारी निर्देशक

---

ईमेल: queeryouthgroup.nepal@gmail.com

सम्पर्क नं : +९७७-९८०८२६२६९१

ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३

 http://fb.com/QYGnepal/

 qygnepal  QueerYouthGroup